# पिखालखुः मूलढोकाबाहिरका रक्षक

– योगेशराज

## १. विषय प्रवेशः

झन्डै प्रत्येक नेवारघरको[Δ] मूलढोकाअगाडि एउटा गोलाकार, चेप्टो र कुँदिएको[१] ढुङ्गा देख्न पाइन्छ। मूलढोकाभित्र पस्ता टेक्नुपर्ने 'दैलो ढुङ्गा' भन्दा फरक यो ढुङ्गा मूलढोकासामु तर केही पर[२] ओछ्याइएको हुन्छ। यो ढुङ्गालाई नेपालभाषामा पिखालखु (भक्तपुर भाषिकामा: पिखालाकि) भनिएको पाइयो। प्राय: नेवार घरधनीहरूले यसलाई कुमारको प्रतीक मानेको देखिन्छ। लेभिले यो अप्रतिमायुक्त (uniconic) ढुङ्गालाई "कहिलेकाहीँ क्षेत्रपालको रूपमा लिइने"[३] गरेको भेट्टाएका छन् [लेभि:१९९२:२६२]. एकजना नेवार पुरोहितले पिखालखु भनिएको यो ढुङ्गालाई स्थूल जिह्वा क्षेत्रपालको रूपमा आफूले पूजा गर्ने गरेको बताएका छन्।[४] एक अन्य पुरोहितका अनुसार, सो ढुङ्गा क्षेत्रपाल हो र पिखालखु चाहिँ यथार्थमा मूलढोकाको माथिल्लो चौकोस (जहाँ त्रिकोणाकार किल्ला ठोकिएको हुन्छ) मा विराजमान देव हुन्।[५] यद्यपि क्षेत्रपाल

---

[Δ] यो लेख भक्तपुरका नेवारघरहरूको स्थलगत भ्रमणका आधारमा तयार गरिएको हो। यहाँ प्रयोग गरिन लागिएका तथ्याङ्कहरू पनि तसर्थ भक्तपुरका मात्रै हुन्। यद्यपि यहाँ गरिएको अनुसन्धान अन्य नेवारबस्तीहरूमा दोहोऱ्याउन सकिन्छ।

[१] कतिपय ढुङ्गामा कुँदिएका बुट्टाहरू भिन्न भिन्न भेटिन्छन् (परिशिष्ट) कतिपयमा कुनै धर्को वा बिन्दुसम्म पनि भेटिदैन। कतिपय घरका अगाडि त्यस्तो कुनै ढुङ्गा पनि छैन यद्यपि ढुङ्गा रहनुपर्ने स्थानमा पूजा गर्ने, चोखो पानी चढाउने संस्कार चाहिँ शेष रहेकै देखिन्छ।

[२] मूलढोकाबाट एक हातदेखि झन्डै २० हात परसम्म यस्तो ढुङ्गा भेट्टाइएका छन्।

[३] यद्यपि अन्यत्र उनैले यसलाई 'कहिलेकाहीँ' सैद्धान्तिक रूपले कुमार भनी चिनिने गरेको' कुरा पनि लेखेका छन् [ लेभि:१९९२:२६२ ]

[४] विनोदराज शर्मासितको व्यक्तिगत कुराकानी।शर्मा स्थूलजिह्वा भन्नाले 'जति दिए पनि खान सक्ने' भन्न रुचाउँछन्।

[५] रमापतिराज शर्माबाट प्राप्त जानकारी अनुसार।

भनिने ढुङ्गाहरू पिखालखु भनिने ढुङ्गाहरूजस्तै देखिन्छन् ।[६] ती बेग्लै हुन् भन्ने कुरामा कुनै नेवार घरधनीलाई सन्देह नरहेको तथ्य उल्लेखनीय छ । तिनले क्षेत्रपाल भनी देखाएका ढुङ्गाहरू प्रायः इनारनजिक, चोकको एक कुनामा, डबलिमा पुलमा र अन्य साझा/सार्वजनिक ठाउँहरूमा राखिएका र यदाकदा मात्र[७] मुख्य ढोका बाहिर बाटोमा पाइएका छन् । पिखालखु घर बनाइँदा अन्यत्रबाट ल्याइन्छ [ लेभि:१९९२:२६२ ] भनेर भनिए तापनि यथार्थमा यो कुलदेवता (ने आगंद्यो) एउटा थलोबाट अन्यत्र सारेजस्तो कुनै विधि संस्कार पूरा गरी सारेको पाइँदैन । कुनै नयाँ घर बनाइसकेपछि अथवा वासस्थान सारेर कुनै नयाँ घरमा प्रवेश गरिसकेपछि पिखालखु स्थापना गर्ने प्रचलन देखिन्छ । यतिखेर पिखालखु भनिएको ढुङ्गामुनि पुरानो तामाको सिक्का राखिने चलन पनि दृष्टिगत हुन्छ । वर्तमानमा पिखालखुको प्रकार र घरधनीको सामाजिक पृष्ठभूमिबीच कुनै अन्तर्सम्बन्ध नदेखिए तापनि विगतमा त्यस्तो सम्बन्ध रहेको हुन सक्छ । जे होस्, पिखालखुको परिचयविषयमा पर्याप्त अस्पष्टता छ भन्दा अत्युक्ति नहोला ।

**२. क्षेत्रपाल**

क्षेत्रपाल कुनै खेत अथवा भूमिखण्डका रक्षक देवता मानिन्छन् [ शर्मा: १९९५: २५३ ]। क्षेत्रपाललाई शिवको अनुचर [ ब्रह्मा: ३.४१:३३;४.१४:७ ][८] देखि स्वयं कार्तवीर्य[८] सितै एकात्म [मत्स्य: ४३: २७, वायु ४४:२४] मान्ने पुराणहरू पनि छन् । क्षेत्रपाललाई विघ्नपाद भैरव मान्ने तान्त्रिक परम्परा पनि रहेछ ।[९] यो परम्पराअनुसार क्षेत्रपालको स्वरूप वर्णन (ध्यान) यस्तो छः

> चन्द्रमालाई जटामा धारण गरेका, तीन आँखा र नीलाञ्जन पर्वतजस्तो वर्ण भएका, एक हातले गदा र अर्कोले कपाल समाएका, राम्रा सुगन्धित राता माला र वस्त्र पहिरेका, घण्टाहरू झुन्डिएको मेखलाबाट घर्घर ध्वनि मिश्रित झङ्कार निकाल्ने, डरलाग्दा व्यापक भएर रहेका गडुल्कुलिएको सर्पको कुण्डलले सुसज्जित श्रीक्षेत्रपाललाई नमस्कार ।[१०]

"कैला केश लामा दाह्रा भएका कालो वर्ण र डरलाग्दो अनुहार भएका खप्परको माला लाएका त्रिशुल हातमा लिएका क्षेत्रपाल हुन् ।"

झन्डै एघारौं शताब्दी इस्वीको भनिएको प्रतिष्ठालक्षणसारसमुच्चय भन्ने ग्रन्थको छैटौं अध्यायमा दिइएको शैव देवदेवीहरूमध्ये क्षेत्रपालको वर्णन यसरी गरिएको छ :[११]

---

६ "कहिलेकाहीं यसमा (पिखालखुमा) क्षेत्रपालमा कुँदिएकै बुट्टाहरू भेटिन्छन्" [ लेभि:१९९२:२६२ ]

७ विशेष गरी भित्र चोक रहेको अवस्थामा चोक पस्ने घरदलानबाहिर ।यस्ता केही चोकहघरूमा वर्तमानमा अथवा अतीतमा एकै परिवारका मानिसहरू बसेका देखिन्छन् ।

८ पुराणहरूको उद्धरणको लागि [ शर्मा: वि.सं. २०२८ ] हेर्नुस् ।

८ कृतवीर्य पुत्र, जो तन्त्रशास्त्रका आचार्य पनि थिए । रावणलाई यिनले जितेका थिए । ब्रह्मवैवर्त पुराणअनुसार यिनलाई परशुरामले मारे ।

९ पं. भासकर बोध भिश्रको सङ्ग्रहमा रहेको हस्तलिखित ग्रन्थ *तन्त्रसार* अनुसार । यसग्रन्थमा उनलाई बृहत्पिण्ड ग्रहणगर्ने भनिएको छ । द्र. पाद टिप्पणी ४ हेर्नुस् ।

१० भ्राजच्चन्द्रजटाधरं त्रिनयनं नीलाञ्जनाद्रिप्रभंदोर्दण्डान्तगदाकपालमरुणस्रग्वस्त्रगन्धोज्ज्वलं ।
घंटामेखलघर्घरध्वनिर्मिलज्झंकारभीमं बिभुं बंदेसंहितसर्पकुण्डलधरंश्रीक्षेत्रपालंसदाः ।
उपरोक्त अनुवाद पं. भास्करबोध मिश्रको हो ।

११ बभ्रुकेशोग्रदंष्ट्रास्याः कृष्णवार्णाभयङ्कराः ।

वर्णमा र हस्तायुधमा यसमा केही भिन्नता देखिए तापनि प्रकृति, स्वभाव समान रहेको तथ्य विचारणीय छ। क्षेत्रपाल धेरै किसिमका हुन्छन् भन्ने जानकारीलाई[१२] सही मान्ने हो भने यस्तो सामान्य विवरणात्मक भिन्नतालाई स्वाभाविक मान्नुपर्ला।

हिन्दू वास्तुकलाभित्र क्षेत्रपाल वासस्थानको रक्षकको रूपमा देखापर्दछन्। एघारौं शताब्दीको भनिएको वास्तुशास्त्रसम्बन्धी एउटा ग्रन्थमा यसो लेखिएको छ:

> शिव मन्दिरमा, खास गरेर सँगैको डबलिमा यस्ता मूर्तिहरू बनाइनुपर्छ: कालदेवको मूर्ति उत्तरमा राखिनुपर्छ भने क्षेत्रपालहरू र कार्त्तिकेय (अथवा ६ मुख भएका) मूर्ति मुख्य भवनको भुइँतल्ला उक्लिने खुड्किलामा कुँदिएको हुनुपर्छ।[१३]

ध्यान दिनुपर्ने तथ्य त के हो भने भक्तपुरको कुनै पनि शिवमन्दिरवरपर 'क्षेत्रपाल' भेटिएको छैन। खुड्किलामा कुँदिएको क्षेत्रपाल भने प्राय: बौद्ध विहार बहीमास्थित क्वा: पाल देवको मुख्यद्वार बाहिर देखापर्छ।

क्षेत्रपाललाई गृहप्रवेश अथवा अन्य शान्तिकर्महरूको समय प्रसन्न राख्नुपर्ने विधान रहेको र यसको लागि *चौबाटोमा* सिन्दूर, बत्ती, दही भात इत्यादि सजाएर राख्ने प्रथाको चर्चा एउटा सांस्कृतिक कोषमा भएको छ। खेत जोत्नु, बीउ रोप्नुअगाडि पनि क्षेत्रपाललाई पूजा गर्ने विधान भारतका कतिपय स्थानमा प्रचलित रहेको कुरा सो कोषबाट थाहा पाइन्छ। [ शर्मा: वि.सं. २०५१: २५३ ]। नेवारहरूको सन्दर्भमा यो सूची अलि अल्मल्याउने खालको बन्दछ। गृहप्रवेश वा अन्य पूजाकर्मका वेला यिनीहरू पिखालखुको पूजा गर्छन्[१४] शान्तिकर्म अथवा दोष अन्भाउनका लागि क्षेत्रपाललाई भोजभाग छुट्याउँछन् र खेत जोत्ने बीउ रोप्ने आदि काममा कुनै विशेष पूजा गर्दैनन्। बृहद्पुरश्चर्याणव तन्त्रको कुब्जिका प्रकरणमा आउने आवरण पूजामा भूद्वारे क्षेत्रपालं गणेशं वटुकं तथा भनी उल्लेख भएबाट[१५] *भूद्वारका क्षेत्रपाल*, गणेश र वटुकलाई पुज्नुपर्ने विधान रहेको छ भन्ने आभास पाइन्छ। यसबाट द्वारको भूमिमा क्षेत्रपाल रहने कुरा पत्तो लाग्दछ साथै क्षेत्रपाल र वटुक[१६] दुवै भिन्न देव हुन् भन्ने प्रमाणित हुन्छ। यो विवेचनावाट कतिपय कुराहरूले पिखालखु क्षेत्रपालकै एक भेद हो कि भन्ने निष्कर्षतर्फ इङ्गित गरेको कुरातर्फ विवेकशील पाठकको ध्यान तान्न नपर्ला।

---

कपालमालिन: शूलधारिण: क्षेत्रपालका: ॥

१२ विनोदराज शर्माबाट प्राप्त जानकारी।

१३ The Images should be (made) likewise in the Siva temple, especially in the (attached) pavilion; the image of the kala (Death) is said to be in the north, and the image of kshetrapalas also as well as of kartikeya (lit. six faced) should be carved on the ascending steps of the base of the main edifice. [Manasara ch XX 101-104].

१४ यस बारेमा केही विवरण पछि आउनेछ।

१५ [ न:घ:भनी: वि.सं. २०४८: ६९ ] मा उद्धृत

१६ वटुकलाई शब्दकोषमा भैरव भनी उल्लेख भएको छ [ आप्टेको हिन्दी संस्कृत कोश ] मैथिलीमा उपनयनका अधिकारीलाई वटुक अर्थात् कुमार भन्ने प्रचलन छ। वटुकलाई रमापति राज शर्मा पनि कुमारकै पर्यायमा लिन रुचाउँछन्।

### ३. कुमार

यिनी शिवका दुई पुत्रमध्ये एक हुन्। यिनको अर्को नाम कार्त्तिकेय हो[१७] किनभने उनलाई ६ वटी कृत्तिकाहरूले हुर्काएका थिए। उनको जन्मसित गङ्गाको सम्वन्ध छ।[१८] कुमार एकजना वास्तुकलाविद् हुन् [ मत्स्य. २५२.३ ] भन्ने कुरा रुचिकर लाग्न सक्छ। यस बाहेक, आठौंकल्पको आरम्भमा ब्रह्माका एक पुत्र नील लोहित भएका थिए जो सधैं रोइरहन्थे। कुमार पनि भनिने योपुत्रलाई ब्रह्माले रुद्र, महादेव आदि शिवकै पर्यायवाची नामहरूद्वारा न्वारान गरेको कुरा पनि पढ्न पाइन्छ। [ वायु २७.४-१६ ]। त्यस्तै उनन्तिसौं कल्पमा ब्रह्माले ध्यानावस्थामा जन्माएका मानसपुत्र पनि कुमार नै कहलाएका भेटिन्छन्। उनी श्वेत वर्णका थिए र उनको मुखाकृति भयङ्कर थियो र त्यसैले स्वयं ब्रह्माले उनको स्तुति गरेका थिए। [ वायु २२.१०-२३ ]।

सान्दर्भिक तथ्य चाहिँ के हो भने हामीले माथि क्षेत्रपालको स्वरूपवर्णनमा यस्तै भयानकताको छाया परेको देखिसकेका छौं। वास्तुशास्त्रमा कुमारलाई क्षेत्रपालको पर्याय मानिएको एउटा उद्धरण परेको छ :

उत्तरपूर्व दिशामा क्षेत्रपाल (मकैबारीका देवता) *अथवा* वटुकको मन्दिर हुनुपर्छ।[१९] कुमार एकजनाप्रजापति पनिहुन् (ब्रह्म, ३.१५४. वायु, ६५.५३) पूर्वोद्धृत एक ठाउँमा मुख्यद्वार उक्लिने खुड्किलामा कार्त्तिकेयको चित्र कुँदिएको हुनुपर्ने कुरा परिसकेको छ। भक्तपुरमा ढोकाको दायाँ गणेश र बायाँ कुमारलाई द्वारपालको रूपमा रहेको विश्वास गरिन्छ।

कुमारको स्वरूपका बारेमा अध्ययन गर्दा प्रतिष्ठालक्षणसारसमुच्चयमा तीन कुमारहरूको चर्चा गरिएको तथ्य महत्त्वपूर्ण हुन जान्छ।[२०] पहिलोलाई स्कन्द भनिएको छ: यिनको ५ मुख, बाह्र हात र पद्मासन रहने कुरा त्यहाँ परेको छ। दोस्रोलाई कुमार भनिएको छ : यिनको एक मुख, ५ हात र मयूरासन देखिन्छ। तेस्रोलाई बालकुमार भनिएको छ: यिनको केवल दुई वटा हात कोरिएको छ। नत्र यिनी झन्डै दोस्रा कुमारजस्तै देखिन्छन्। स्कन्द र कुमारको हस्तायुध यसप्रकार छ:

स्कन्द: वाण, पास, खड्ग, भाला, पन्छी, झन्डा, मयूरप्वाँख, ढाल।[२१]

कुमार: ×, ×, खड्ग, भाला, ×, ×, मयूरप्वाँख, ढाल, घण्टा वज्र।[२२]

---

१७ अमरकोष प्रथम काण्ड, स्वर्ग वर्ग:
कार्त्तिकेयो महासेनः शरजन्मा षडाननः ॥४१॥
पार्वतीनन्दनः स्कन्दः सेनानी रग्निभूर्गुहः ॥
बाहुलेयस्तारकजिद्विशाखः शिखिवाहनः ॥४२॥
षाण्मातुरः शक्तिधरः कुमारः क्रौञ्चदारणः ॥

१८ स्वस्थानी व्रतकथा एवं ब्रह्मवैवर्त्तपुराणका आधारमा।

१९ In the north-east should be built the temple of Kshetra-pala (god of cornfield) or Vatuka [Manasara ch xxx II :28]

२० कुमारको योलक्षण भेद सैद्धान्तिक दृष्टिले भन्दापनि व्यावहारिक दृष्टिले महत्त्वपूर्ण हुन जान्छ। हेर्नुस् : व्यूनेमान एवं ताचिकावा: १९९१: ८२-८३

२१ बाँकी चारवटा हातहरूमध्ये दायाँ क्रमशः तर्जनी र वर-मुद्रामा देखिन्छ भने बायाँ क्रमशः अभय मुद्रामा र बुद्दामा बिसाइएका देखिन्छन्।

सम्भवत: नेवारहरूले मन पराएका कुमार स्कन्द हुन्। पिखालखुलाई कुमार भनेर प्रमाणित गर्न चाहनेहरूले अन्य कुराका अतिरिक्त उनको पद्मासनलाई पिखालखुमा रहेको कमलपत्रहरू र उनको ६ वटा मुखलाई पिखालखुमा कुँदिएको ६ वटा कमल पत्रदलसित तुलना गर्ने गरेको पाएको छु।

**४. पिखालखु**

पिखालखु एउटा नेवारी (नेपालभाषाको) शब्द हो। सामान्यतया यसको पदविच्छेद पिखा र लखु यसो गरिन्छ। अघिल्लो शब्दलाई ढोका (ने. *लुखा, ध्वाखा*) सँग जोड्न सकिन्छ।[२३] पछिल्लो शब्दलाई लेभिले पुरानो नेपालभाषाको बाटोवाची शब्द मानेका छन् लेभि: [ १९९५:२६२ ] यद्यपि स्रोत खुलाउन आवश्यक ठानेनन्।[२४] केही संस्कारहरूमा पिखालखु[२५] – घर (निजी) र संसार (सार्वजनिक) छुट्याउने सिमाना रहेको तथ्यले हाम्रो ध्यान तान्छ।[२६] पिखालखु भन्ने शब्दले ढुङ्गालाई मात्र होइन, त्यस वरिपरिको क्षेत्रलाई समेत जनाउँछ भन्ने उल्लेख भएको पनि छ [ लेभि: १९९५: १९०-१९१ ]।

पिखालखु अथवा त्यो ढुङ्गा रहेको क्षेत्रमा पूजा गर्ने प्रचलनबारे गोपालराजवंशावलीमा एउटा उल्लेख परेको छ जसमा दूधे कर्कलोलाई द्वारमा राखेपछि श्रापबाट रक्षा गरिएको र महामारी थामिएको कुरा लेखिएको छ। श्रीपुष्पदेवको पालोमा घटेको भनिएको यो घटना तर कुनै *नाग* लाई प्रसन्न पार्ने विधान जस्तो बुझिन्छ।[२७]

**५. पिखालखु र क्षेत्रपाल**

पिखालखु र क्षेत्रपाल भिन्नै प्रकृतिका देवता हुन् भन्ने आशय लाग्ने दुईवटा कुराहरू उल्लेखनीय छन् –

१. क्षेत्रपाल कडा छन्।[२८] उनलाई रिसाउन दिनु हुँदैन। घरमा कुनै अनिष्ट, विपत्ति आइपर्‍यो भने क्षेत्रपालको भागमा कुनै तलमाथि परेको हुन सक्छ भन्ने विश्वास

---

[२२] बालकुमारका दुई हातमा क्रमश: भाला र पन्छी रहेको देखिन्छ।

[२३] अमरकोश: ने. सं. ५५० मा ढोकावाची शब्द खा नै देखा परेको छ। नेपाल भाषा (नेवारी) एकाक्षरी भाषा हो भन्ने ज्ञानलाई पृष्ठभूमिमा राख्ने वित्तिकै लुखा, पिखा, दुखा, ध्वाखा इत्यादि ढोका (< ने. ध्वाखा) कै विशेष (particular) शब्दहरू हुन् भन्ने भेउ लाग्छ। खा वास्तवमा घर र घरको उपस्करण शब्द हो।

[२४] सम्भवत: उनले लखुलाई लाछि (अमरकोश, ने. सं. ८३१) वा लाछ अमरकोश: ने.सं. ५०६) कै परिवर्तित रूप मानेका होलान्। पछिल्लो लाछ बाटोवाची शब्द हो।

[२५] क. इहिका बेला अलिं लिइ फर्केका इहिमचा र लस्करलाई पिखालखुमा नै लसकुस (नेपा. स्वागत) संस्कारले स्वागत गरीन्छ।

ख. बिहाका बेला कन्यालाई विदाइ गर्ने कार्य पिखालखुमा हुन्छ, त्यस्तै दुलही घर भित्र्याउनु (ने. दुकायेगु) काम पनि घरकी नकींले (नेपा. घरकी सबैभन्दा जेठी विवाहिताले) पिखालखुमै गर्दछिन्। यतिबेला दुलहीलाई अन्भाउने काम पनि हुन्छ।

ग. मृत्युका बेला मृतकलाई कूत: (नेपा. बाँसको खट) मा पल्टाउने काम पिखालखुमा हुन्छ। लेभिको यो सूचना त्यति भरपर्दो भने छैन।

[२६] यो सरलीकरण उचित नभएको तथ्य पछि आउनेछ।

[२७] चङ्गुया दुदु फंकया हेतु: श्रीप्वस्येदेबराजासप्रज्यास असहन देशस महंङ्व, थ्वतेस सातक याङ, म्हंगवस क्यङ ॥ गुंणला थोव दुंह्निस कोन्हु दुदु फकंकन, खुंजे थ्वन द्वारस तेये गुह्वातो एकापलकासखी, आंभिषेस श्रपरक्षा, महं निवारण ... [ गो.रा.वं. ३० ख: ३-५ ]

[२८] वंबाहा: नागपोखरीका एक बौद्ध महिलालाई नाग (चित्र ) कडा छन् कि भन्ने प्रश्न गर्दा तिनले नागभन्दा सोही परिसरमा दक्षिणपूर्वी कुना (यो स्थिति विहारहरूमा क्षेत्रपालको निम्ति छुट्याइएकै देखिन्छ) मा

रहेको देखिन्छ। यस दृष्टिकोणबाट क्षेत्रपाल र छ्वास:[२९] उत्तिकै भयानक हुन्। पिखालखु अपेक्षाकृत नरम देवता हुन्।

२. पिखालखु घरको शुद्धता/अशुद्धतासँग र शुभलाभ/हानिसँग निकै नजदिकको सम्वन्ध भएको देउता हो।[३०] प्रत्येक विहान नेवार गृहिणीले पवित्र पानी (ने.नील:) घर भित्र्याउँदा पिखालखुलाई पहिले अलिकति चढाउँछिन्। त्यस्तै नजीकका देवीदेवताकहाँ पूजा गर्न निस्कँदा (ने ब्यय्के वनेगु) तिनी सर्वप्रथम पिखालखुलाई पूजा गर्न विर्सिदैनन्। कति नेवार अधबैंसेहरूलाई घरबाट निस्कँदा वा घरभित्र प्रवेश गर्दा पिखालखुलाई दाहिने पारी घुम्ने गरेको (ने जपाय् लाकेगु) देख्न सकिन्छ। फेरि तिहारमा दीपावलि गर्ने (लक्ष्मीपूजा) का दिन ढोका लिप्ने क्रममा पिखालखुलाई पनि लिपेर ढोकासित जोड्ने गरिन्छ।[३१] यो विवेचनाबाट पिखालखुलाई निजी र सार्वजनिक संसारको सिमाना मानिएको धारणा एकआयामी र अपरिपक्व देखिएको छ।

## ६. पिखालखु र कुमार

पिखालखुलाई कुमार मान्नेहरूको आधार सम्भवत: द्वारपालको रूपमा गणेश र कुमार राख्ने वास्तु-परम्परा हो। मूलढोकाको दुई छेऊमा द्वारपाल राखिएका घरहरू दुर्लभ छन्। तर एउटा घरको ढोका दुई छेऊमा पूजा नगरिएका र अप्रतिमायुक्त ढुङ्गा बिसाएको भेट्टाइएका छन् (चित्र )। यस घरको बेग्लै पिखालखु रहेको तथ्य भने विचारणीय छ। पिखालखुलाई कुमारसित जोड्ने अर्को एउटा आधार दुवैको पानीसितको सम्बन्ध हुन सक्छ।[३२] कुमार गङ्गापुत्र रहेको तथ्य द्रष्टव्य छ। पिखालखु शब्दको अर्को एक थरीको व्युत्पत्तिले यसलाई पानीसँग निकै नजीक पुऱ्याउँछ।

सो व्युत्पत्तिअनुसार पिखालखु शब्दको पदविच्छेद माथि भनिसकिए झैं पिखा र लखु यसो गरिन्छ तर पछिल्लो शब्द लखु चाहिँ पानीवाची शब्द हो भन्छन्। भाषा वैज्ञानिक दृष्टिले[३३] यो विश्लेषण बढी भरपर्दो देखिन्छ। प्रत्येक घरको मूलढोका बाहिर खोला, कुण्डजस्तो कुनै पानीको स्रोत हुनु परम्परागत अर्थमा शुभ पनि हो। तर पिखालखुमा गरिने केही संस्कारहरूलाई (जस्तो इही र बिहाका बेला) यो दृष्टिले सङ्गतिपूर्ण ढङ्गले व्याख्या गर्न सकिए पनि बाँकी संस्कारहरूलाई (जस्तो मृत्युको बेला र दैनन्दित संस्कार) व्याख्या गर्न भने सजिलो छैन। यसबाहेक पिखालखुमा कुँदिएका बुट्टा, आकृति र आधारहरूमा पाइएको विविधतालाई पनि यो दृष्टिकोणले व्याख्या गर्न गाह्रै पर्नेछ।

---

रहेको क्षेत्रपाल बढी कडा रहेको बताइन्। केही समय अघि सोही ठाउँ बस्ने एकजना युवाले सो नाग अत्यन्तै कडा रहेको बताएका थिए।

[२९] छ्वास: चौबाटो ढुकेर बस्ने, क्षेत्रपाल सरहकै प्रेतहरूको वासस्थान हो।

[३०] पिखालखु घरकै अङ्ग देखिए तापनि नेवार घरको वास्तुकलाका बारेमा चर्चा परेका कतिपय शास्त्रीय एवं आधुनिक विवेचनाहरूमा पिखालखुको चर्चासम्मै परेको छैन।

[३१] यो परम्परा त्यति पुरानो होइन भन्नेहरू पनि छन्।

[३२] यतातिर मेरो ध्यान डोऱ्याइदिने काम रमापति राज शर्माबाट भएको हो, यसको लागि म उहाँप्रति कृतज्ञ छु।

[३३] लखु पानीवाची शब्दको रूपमा नेसं. ५९१ को अमरकोशमा देखिएको छ। यसबाहेक लंख्व (अमरकोश: नेसं. ५०६), लख (अमरकोश: ने सं. ६६१) लंख (लांख्व (फारसी प्रकाश: नेसं. ८२०) इत्यादि रूपहरू पनि समानै छन्।

## ७. निष्कर्ष

माथिको विवेचनाले के स्पष्ट पार्छ भने पिखालखुको परिचय एवं प्रकृतिका बारेमा थरीथरीका तर्कसम्मत व्याख्याहरू सम्भव छन्। यस्तो बहुअर्थी सङ्केत/प्रतीकहरू नेवार-संस्कृतिमा पाइनु अस्वाभाविक छैन।[३४] साँच्चि भन्ने हो भने नेवारसमाजजस्तो जटिल परम्परा बोकेको समाजमा निर्क्यौल वा निष्कर्ष गर्नेजस्ता कुराहरू पूर्वाग्रह मात्र पनि सिद्ध हुन सक्छ। पिखालखु, क्षेत्रपाल र कुमारका कतिपय साझा तथ्य एवं कतिपय भिन्न तथ्यहरू बाहिरिया विद्वान्हरूका लागि विसङ्गतिपूर्ण देखिइन सक्छन् तर एकजना नेवार यस्तो कुराले कहिल्यै अलमलिएको देखिएको छैन। वास्तवमा यो वैविध्यता-विश्लेषण परम्पराको परिणाम मात्र हुन सक्छ। एउटा नेवार-मस्तिष्क संश्लेषणात्मक मस्तिष्क हो कि? पिखालखुमा कमलपत्र संख्यामा देखिएको फरकलाई सम्बन्धित शिल्पी (ने ल्वहँक: मि) ले[३५] – शास्त्रीय परिभाषा दिन खोजेको यहाँनेर सम्झिन्छु। उनले ६ वटा कमलपत्रलाई कुमारसित, सातवटालाई सप्तर्षिसित, आठवटालाई अष्टमातृकासित, नौवटालाई नवदुर्गासित, १२ वटालाई चन्द्रमासित, सोह्रवटालाई सूर्यसित जोडे। त्यस्तै कमलदलभित्र कोरिएको षट्कोणलाई शिवशक्ति, अष्टकोणलाई अष्टमातृकासित जोडे। त्यस्तो यन्त्रभित्र देखापर्ने पाँचबिन्दु पाँचपाण्डव भनी सुध्याए। स्पष्ट छ, यस्तो स्पष्टीकरण भरपर्दो छैन तर पिखालखु कुँद्ने एकजना वयोवृद्ध शिलाकारबाट प्राप्त भएकोले यसलाई उपेक्षा गर्न भने मिल्दैन। एउटा सम्भावना अवश्य छ, शायद पिखालखुकोपरिचय परम्पराबाट हराइसकेको छ। अर्को सम्भावना के हुन सक्छ भने शायद पिखालखु सामान्य वासस्थान रक्षक हुन् जो पानीसित सम्बन्धित छन्। अहिलेलाई दोस्रो सम्भावनालाई यावत् "विरोधाभासहरू" समेत स्वीकार गर्नु ठीक होला।

### सन्दर्भ ग्रन्थहरू


आचार्य, प्रसन्न कु. (अ.) १९३४ (१९९५) आर्किटेक्चर् आफ् मनसार, लो प्राइस् पब्लिकेशन्स्, दिल्ली।

आप्टे, वा. शि. १९६९ संस्कृत हिन्दी कोश, मोतीलाल बनारसीदास पब्लिशर्स प्रा.लि., दिल्ली।

गौतम, कविप्रसाद (अ.) १९३३ अमरकोश:, शिवप्रशाद राघोराम, रामघाट बनारस सिटी।

न:घ: भनी, तीर्थलाल २०४८ यमपञ्चक लक्ष्मीपूजा, अभिलेख वर्ष ९, अङ्क ९, राष्ट्रिय अभिलेखालय, काठमाडौं।


[३४] नेवारहरुको सांस्कृतिक विश्व बहुअर्थी/बहुसङ्केतात्मक प्रतीकहरुको व्यवस्था हो भन्ने सिद्धान्तको लागि लेखकको शीघ्र प्रकाश्य लेख "नेवार-विश्व" हेर्नुस्।

[३५] नासमना तोखचो बस्ने वृद्ध शिलाका सुनकुमारबाट प्राप्त जानकारी।



साकोठा (तद्विछेँ (महाविहार) को पिखालखु ।



खाँमा, इन्द्रायणीद्वारभन्दा केही भित्र, इन्द्रायणीको खः
जात्रा बेला खः बिसाउने आसन ।



पिखालखु: 'प्रधान' घरको, गछैं ।



टेराकोटाका पिखालखु । भोलाछैं– नागपोखरी मार्ग ।



भोलाछेँस्थित एउटा घरको मूल द्वार दायाँबायाँका
अनाकृति गणेश र कुमार



इनाचो, स्वंग ल्वहँभन्दा अलिक माथि बीचबाटोमा रहेका क्षेत्रपाल ।



चोछें छुमँ गनेद्योबाट व्यासी झर्ने ओरालोको सिरानका क्षेत्रपाल ।



दरबार स्क्वायरस्थित डबलिमा रहेका आकृतिहरू । क्षेत्रपाल ?